# नागरिकता प्रमाणपत्र वितरण टोलीको कार्य सञ्चालन निर्देशिका, २०७०

**प्रस्तावना** : नागरिकता टोली मार्फत नागरिकता प्रमाणपत्र वितरण कार्यलाई सरल र सहज बनाउन तथा वितरण कार्यमा एकरुपता कायम गरी नागरिकता प्रमाणपत्र वितरणको कार्यलाई प्रभावकारी रुपमा सञ्चालन गर्न आवश्यक भएकोले,

नेपाल नागरिकता ऐन, २०६३ को दफा २२ को प्रयोजनको लागि नेपाल सरकारले देहायको नागरिकता प्रमाणपत्र वितरण टोलीको कार्य सञ्चालन निर्देशिका बनाएको छ ।

## परिच्छेद-१

## प्रारम्भिक

१. **संक्षिप्त नाम र प्रारम्भ** : (१) यस निर्देशिकाको नाम "नागरिकता प्रमाणपत्र वितरण टोलीको कार्य सञ्चालन निर्देशिका, २०७०" रहेको छ ।

(२) यो निर्देशिका सम्वत् २०७० साल वैशाख ८ गते देखि प्रारम्भ हुनेछ ।

२. **परिभाषा** : विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस निर्देशिकामा,-

(क) "ऐन" भन्नाले नेपाल नागरिकता ऐन, २०६३ सम्झनु पर्छ ।

(ख) "नागरिकता टोली" भन्नाले नागरिकता वितरण गर्ने प्रयोजनका लागि नेपाल सरकारले ऐनको दफा २२ बमोजिम स्थानीय स्तरमा खटाएको नागरिकता प्रमाणपत्र वितरण टोली सम्झनु पर्छ र सो शब्दले एकीकृत घुम्ती सेवा टोली समेतलाई जनाउँनेछ ।

(ग) "नियमावली" भन्नाले नेपाल नागरिकता नियमावली, २०६३ सम्झनु पर्छ ।

(घ) "मन्त्रालय" भन्नाले गृह मन्त्रालय सम्झनु पर्छ ।

## परिच्छेद-२

## नागरिकता टोलीको गठन सम्बन्धी व्यवस्था

३. **नागरिकता टोली खटाउन सक्ने** : (१) नेपाल सरकारले वंशजको नाताले, वैवाहिक अङ्गिकृत र जन्मको आधारमा नेपालको नागरिकता प्राप्त गरेका नागरिकको त्यस्तो नागरिकता प्रमाणपत्र प्राप्त गर्नु अघि जन्मेको सन्तानलाई वंशजको नाताले नागरिकताको प्रमाणपत्र वितरण गर्नको लागि नागरिकता टोलीले कार्य प्रारम्भ गरेको मितिले एक महिना भित्र कार्य सम्पन्न गर्ने गरी नागरिकता टोली खटाउन सक्नेछ ।

(२) नेपाल सरकारले अनुसूची-१ मा उल्लेख भए बमोजिमको संख्यामा नागरिकता टोली खटाउने छ ।

(३) उपदफा (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि मन्त्रालयको सचिवले अनुसूचीमा-१ मा उल्लिखित टोली संख्यामा आवश्यकता अनुसार थपघट गर्न सक्नेछ ।

(४) उपदफा (१) बमोजिम नागरिकता प्रमाणपत्र वितरण गर्ने प्रयोजनको लागि नेपाल सरकारले आवश्यकता अनुसार निजामती सेवाका कर्मचारीलाई काजमा खटाउन सक्नेछ ।

४. **नागरिकता टोली प्रमुख सम्बन्धी व्यवस्था** : (१) नागरिकता टोली प्रमुखमा निजामती सेवाको अधिकृतस्तरको कर्मचारी रहनेछ ।

(२) नागरिकता टोलीको प्रमुख छनौट गर्दा देहायको प्राथमिकताको आधारमा गरिने छ :-

(क) मन्त्रालय वा अन्तर्गतका कार्यालयमा काम गरिरहेका अधिकृतहरू मध्येबाट,

(ख) खण्ड (क) बमोजिम अधिकृत उपलब्ध नभएमा मन्त्रालय वा अन्तर्गतको कार्यालयमा काम गरी अन्य मन्त्रालय, निकाय वा कार्यालयमा सरुवा वा बढुवा भई गएका अधिकृतहरू मध्येबाट,

(ग) खण्ड (क) र (ख) बमोजिम अधिकृत उपलब्ध नभएमा नागरिकता प्रमाणपत्र वितरण सम्बन्धमा कार्य गरेका अनुभवी अधिकृतहरू मध्येबाट,

(घ) खण्ड (क), (ख) र (ग) बमोजिम अधिकृत उपलब्ध नभएमा कानून विषयमा कम्तीमा स्नातक गरेका अधिकृतहरू मध्येबाट,

(ङ) खण्ड (क), (ख), (ग) र (घ) बमोजिम अधिकृत उपलब्ध नभएमा प्रशासन सेवाका अधिकृतहरू मध्येबाट ।

५. **नागरिकताको प्रमाणपत्र जारी गर्ने अधिकार** : प्रमुख जिल्ला अधिकारीबाट प्रत्यायोजित अधिकारको अधीनमा रही नागरिकता टोली प्रमुखलाई देहाय बमोजिमको नेपाली नागरिकताको प्रमाणपत्र जारी गर्ने अधिकार रहनेछ :-

(क) ऐनको दफा ३ को उपदफा (१) बमोजिम बंशजको आधारमा नेपाली नागरिकता प्रमाणपत्र ।

(ख) ऐनको दफा ३ को उपदफा (४) बमोजिम जन्मको आधारमा नेपालको नागरिकताप्राप्त गरेका नागरिकको त्यस्तो नागरिकता प्रमाणपत्र प्राप्त गर्नु अघि जन्मेको सन्तानलाई बंशजको आधारमा नेपाली नागरिकता प्रमाणपत्र ।

(ग) नेपाली नागरिकसँग विवाह गरेकी विदेशी महिलालाई वैवाहिक अंगिकृत नागरिकताको प्रमाणपत्र ।

६. **नागरिकता टोली प्रमुखको काम, कर्तव्य र अधिकार** : यस निर्देशिकामा अन्यत्र उल्लिखित कुराका अतिरिक्त नागरिकता टोली प्रमुखको काम, कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछ :-

(क) नागरिकता टोलीले आफू खटिएको गाउँ विकास समिति/नगरपालिकामा पुगेपछि नागरिकता वितरणको काम थाल्नु भन्दा अगाडि राजनैतिक दलहरू, नागरिक समाजका प्रवुद्धवर्ग र स्थानीय बुद्धिजिवीहरूसँग नागरिकता वितरण प्रक्रियाबारे अन्तर्क्रिया गरी कार्य प्रक्रियाको जानकारी गराउने र अनुकूल वातावरण निर्माण गर्ने ।

(ख) घनाबस्ती भएको गाउँ विकास समिति वा नगरपालिकाको कार्यालय वा बहुसङ्ख्यक जनतालाई पायक पर्ने सरकारी कार्यालय, सामुदायिक भवन, विद्यालय वा अन्य सार्वजनिक भवनमा मुकाम कायम गर्ने र सो नभएमा अन्य वैकल्पिक व्यवस्था मिलाउने ।

(ग) स्थानीय राजनैतिक दल, नागरिक समाज र स्थानीय निकायको सहयोग लिई नागरिकताको प्रमाणपत्र वितरणका लागि आवश्यक पर्ने फर्निचर र कार्यालयको व्यवस्था मिलाउने ।

(घ) नागरिकताको प्रमाणपत्र वितरण गर्ने कार्यक्रमको जानकारी सम्बन्धित गाउँ विकास समिति/नगरपालिका र स्थानीय संचार माध्यमलाई उपलब्ध गराउनु पर्ने ।

(ङ) आवश्यकता अनुसार स्थानीय निकायबाट सहयोग लिने ।

(च) स्थानीय आवश्यकता, सम्भावना र सुविधालाई ध्यानमा राखी प्रमुख जिल्ला अधिकारीको समन्वयमा टोली प्रमुखले वैकल्पिक वितरण मुकाम कायम गर्ने ।

(छ) नागरिकताको प्रमाणपत्र वितरणको कामलाई प्रभावकारी रूपमा सञ्चालन गर्न टोलीमा खटिएका सबै कर्मचारीलाई जिम्मेवारी स्पष्ट रुपमा तोकी दिनु पर्ने ।

(ज) नागरिकताको प्रमाणपत्रका लागि निवेदन लिने र नागरिकता वितरण गर्ने समय तोकी कार्य सञ्चालन गर्ने ।

(झ) नागरिकताको प्रमाणपत्र वितरणको कार्यमा खटिएको टोलीले आफूलाई सुम्पिएको जिम्मेवारी पूरा गरेपछि सम्पूर्ण कागजात जिल्ला प्रशासन कार्यालयमा बुझाउने ।

(ण) नागरिकताको प्रमाणपत्र वितरणको कार्य सम्पन्न गरेपछि टोलीले गरेको कामको कार्य सम्पन्न प्रतिवेदन जिल्ला प्रशासन कार्यालय र क्षेत्रीय प्रशासन कार्यालयमा पेश गर्ने ।

७. **नागरिकता वितरणका आधारहरू** : नागरिकता टोलीले देहायका कानूनी आधारमा यस निर्देशिका बमोजिम नागरिकता प्रमाणपत्र वितरण गर्नु पर्नेछ :-

(क) नेपालको अन्तरिम संविधान, २०६३,

(ख) नेपाल नागरिकता ऐन, २०६३,

(ग) नेपाल नागरिकता नियमावली, २०६३, र

(घ) नागरिकता वितरण सम्बन्धमा मन्त्रालयबाट विभिन्न समयमा जारी भएका नीतिगत निर्णयहरू ।

८. **नागरिकता टोली रहने स्थान** : (१) प्रमुख जिल्ला अधिकारीले नागरिकता टोली खटाउनु अगाडि नागरिकता टोली रहने स्थान छनौंट गर्न राजनीतिक दलहरूका प्रतिनिधि, जिल्लास्थित कार्यालयका कार्यालय प्रमुखहरू, नागरिक समाज, महिला, अपाङ्ग, दलित, आदिवासी जनजाति, अल्पसङ्ख्यक समुदायका प्रतिनिधिहरूसँग समेत छलफल गरी नागरिकता टोली रहने स्थानको छनौट गर्नु पर्नेछ ।

(२) नागरिकता टोली रहने स्थानको छनौट गर्दा देहायको आधारहरूलाई प्राथमिकता दिनु पर्नेछ :-

(क) सदरमुकामबाट टाढा रहेको, नागरिकताको प्रमाणपत्र वितरण कम भएको तथा अन्य सरकारी सेवा र सुविधा पाउनबाट वञ्चित नागरिक रहेको स्थान,

(ख) जनगणनाको तथ्याङ्क, मतदाता नामावली र नागरिकताको प्रमाणपत्र वितरणको अभिलेख बीच तुलना गरी नागरिकताको प्रमाणपत्र वितरण कम भएको स्थान,

(ग) कम्तीमा दुई देखि बढीमा चारवटा गाउँ विकास समितिलाई पायक पर्ने र बढी भन्दा बढी जनतालाई सुविधा पुग्ने स्थान,

(घ) भौगोलिक रुपमा विकट स्थानहरूलाई सुविधा दिनु पर्ने महशुस भएमा त्यस्तो स्थान,

(ङ) जिल्ला प्रशासन कार्यालय, इलाका प्रशासन कार्यालय, सीमा प्रशासन कार्यालय तथा एकीकृत सेवा केन्द्रभन्दा टाढा रहेको स्थान ।

(३) नागरिकता टोली रहने स्थान छनौट गर्दा सार्वजनिक सेवामा बढी भन्दा बढी नागरिकको पहुँच अभिबृद्धि गर्ने तथा नागरिकता टोलीको सुरक्षा, भौतिक साधन स्रोतको उपलब्धता (स्कूल, स्वास्थ्य सेवा केन्द्र, गाउँ विकास समिति भवन लगायत अन्य सरकारी भवन) लगायतका कुरालाई समेत ध्यान दिनु पर्नेछ ।

९. **नागरिकता टोलीले गर्नु पर्ने पूर्व तयारी** : नागरिकता टोलीले आफू खटिएको स्थानमा जानु अगाडि देहायका कुराहरूमा ध्यान दिनु पर्नेछ :-

(क) नागरिकता टोलीमा खटिने कर्मचारी तथा टोली प्रमुखले ऐन, नियम तथा नागरिकताको प्रमाणपत्र वितरणसँग सम्बन्धित कार्यविधिको बारेमा जानकारी राख्ने र कुनै द्विविधा वा अस्पष्टता भएमा प्रमुख जिल्ला अधिकारीसँग छलफल गरी स्पष्ट हुने ।

(ख) नागरिकताको प्रमाणपत्र वितरणका सम्बन्धमा हाल प्रचलनमा रहेका कुराहरू, कार्यविधि, फाराम, रजिष्टर, नागरिकताको प्रमाणपत्र, होलोग्राम आदिका सम्बन्धमा स्पष्ट जानकारी राख्ने र कुनै विवरण वा कुनै कुराका सम्बन्धमा अस्पष्ट भएमा वा कुनै जिज्ञासा भएमा सम्बन्धित जिल्ला प्रशासन कार्यालयको नागरिकता फाँटमा कार्यरत कर्मचारी, सहायक प्रमुख जिल्ला अधिकारी वा प्रमुख जिल्ला अधिकारीसँग विस्तृत छलफल गरी स्पष्ट हुने ।

(ग) ऐन, नियम, कार्यविधि र कार्य प्रक्रियाका सम्बन्धमा स्पष्ट भएपछि नागरिकता टोलीले आवश्यक रजिष्टर, अनुसूची फाराम, नागरिकताको प्रमाणपत्र, होलोग्राम लगायतका अन्य आवश्यक सामग्रीहरू सूची बमोजिम भए नभएको जाँच गरी जिल्ला प्रशासन कार्यालयबाट बुझ्ने ।

(घ) सम्बन्धित गाउँ विकास समिति र नगरपालिकामा रहेका राजनैतिक दल र नागरिक समाजका प्रतिनिधिहरूसँग नागरिकता वितरण प्रक्रियाका सम्बन्धमा छलफल गरी जानकारी दिने ।

(ङ) सम्बन्धित गाउँ विकास समिति र नगरपालिकालाई नागरिकताको प्रमाणपत्र वितरण सम्बन्धी कार्यक्रमको सूचना अग्रिम रूपमा दिने ।

(च) नागरिकता वितरण सम्बन्धी जानकारी गराउन स्थानीय एफ.एम., पत्रपत्रिका, केबुल नेटवर्क, टि.भी., स्लाइड आदि सञ्चार माध्यमबाट व्यापक रूपमा प्रचार प्रसार गराउने ।

(छ) गाउँ वा नगरमा रहेका शिक्षक, सरकारी कर्मचारी, गैर सरकारी संस्थासँग अन्तरक्रिया गरी नागरिकता प्रमाणपत्र वितरण कार्यको लागि अनुकूल वातावरण बनाउने ।

## परिच्छेद-३

## नागरिकता वितरणमा जिम्मेवार निकाय र पदाधिकारीहरू

१०. **क्षेत्रीय प्रशासकको जिम्मेवारी** : (१) आफ्नो क्षेत्रभित्रका सबै नेपाली नागरिकले सहज ढंगबाट नागरिकताको प्रमाणपत्र पाउने व्यवस्था मिलाउनु क्षेत्रीय प्रशासकको जिम्मेवारी हुनेछ ।

(२) क्षेत्रीय प्रशासकले नागरिकता टोली मार्फत नागरिकता वितरण गर्ने कार्यका सम्बन्धमा देहायको कार्य गर्नु पर्नेछ :-

(क) आफ्नो क्षेत्रभित्र नागरिकता टोलीमा खटिने कर्मचारी नपुग हुने भई थप कर्मचारी माग भई आएमा क्षेत्रीय प्रशासकले आफ्नो क्षेत्र भित्रको अर्को जिल्लाबाट आवश्यक संख्यामा कर्मचारी खटाउने ।

(ख) आफ्नो क्षेत्रभित्र नागरिकता टोली मार्फत नागरिकताको प्रमाणपत्र वितरण गर्ने कार्यमा कुनै कठिनाइ उत्पन्न भएमा क्षेत्रीय प्रशासक स्वयंले अग्रसरता लिई समस्या समाधान गर्ने ।

(ग) तोकिएको समयभित्र नागरिकता टोलीबाट नागरिकताको प्रमाणपत्र वितरणको कार्य सम्पन्न गराउन आवश्यक पहल गर्ने ।

(घ) नागरिकताको प्रमाणपत्र वितरण गर्दा कुनै नीतिगत कठिनाई परी समस्या समाधान हुन नसकेमा मन्त्रालयबाट निकासा लिई निकासा भए बमोजिम गर्ने ।

(ङ) जिल्लामा खटिने नागरिकता टोलीको आवश्यकता अनुसार निरीक्षण, रेखदेख र समन्वय गरी नागरिकताको प्रमाणपत्र वितरणको कार्यमा प्रभावकारिता ल्याउने ।

(च) क्षेत्रीय प्रशासकले आफ्नो क्षेत्रभित्रका जिल्लामा वितरण भएको नागरिकताको जिल्लागत विवरण मासिक रूपमा मन्त्रालयको नागरिकता शाखामा पठाउने, पठाउन लगाउने ।

(छ) नागरिकता टोली खटेको समयमा साप्ताहिक रूपमा विवरण तयार गरी मन्त्रालयमा रहेको नागरिकता वितरण अभियान सञ्चालन केन्द्रीय इकाइमा पठाउने, पठाउन लगाउने ।

(ज) नागरिकताको प्रमाणपत्र वितरणको कार्य सम्पन्न गरेपछि टोलीले गरेको कामको कार्य सम्पन्न प्रतिवेदन मन्त्रालयमा पेश गर्ने ।

११. **प्रमुख जिल्ला अधिकारीको जिम्मेवारी** : (१) नागरिकता टोली मार्फत नागरिकताको प्रमाणपत्र वितरण गर्ने कार्य सम्पादन गर्ने मुख्य जिम्मेवारी प्रमुख जिल्ला अधिकारीको हुनेछ र नागरिकता टोली मार्फत नागरिकता वितरण गर्ने कार्यको प्रभावकारिता समेतको आधारमा प्रमुख जिल्ला अधिकारीको कार्य सम्पादन मूल्याङ्कन हुनेछ ।

(२) प्रमुख जिल्ला अधिकारीले नागरिकता टोली मार्फत नागरिकता वितरण गर्ने कार्यको प्रभावकारिताको लागि देहायका कार्यहरू गर्नु पर्नेछ :-

(क) नागरिकता टोलीमा खटिने कर्मचारीलाई आवश्यक अनुशिक्षणको व्यवस्था गरी ऐन, नियम, कार्यविधि, निर्देशिकाको बारेमा राम्रो जानकारी गराउने । नागरिकता टोलीमा खटिने कर्मचारीले निजले सम्पादन गर्नु पर्ने कार्यको सम्बन्धमा बुझे नबुझेको बारे छलफल गर्ने र नागरिकता वितरणको कार्य प्रक्रियाको बारेमा नागरिकताको फाँटमा पूर्व अभ्यास सम्बन्धी नमुना प्रर्दशन गर्ने । त्यस्ता कर्मचारीले ऐन, नियम, नागरिकता प्रदान गर्ने सम्बन्धी कार्यविधि र प्रक्रियाका सम्बन्धमा स्पष्ट भए नभएको यकिन गर्ने, नभएको भए पुनः छलफल गर्ने ।

(ख) राजनैतिक दल, पत्रकारहरू र नागरिक समाजका प्रतिनिधिहरू राखी नागरिकताको प्रमाणपत्र वितरण कार्यको सम्बन्धमा छलफल गर्ने र सो कार्यका लागि जिल्लाभर अनुकूल वातावरण तयार गर्न गाउँस्तरमा रहेका इकाइहरू मार्फत सहयोग गरिदिन राजनैतिक दलहरूलाई अनुरोध गर्ने ।

(ग) जिल्लामा नागरिकता टोली खटिएको कुराको जानकारी स्थानीय पत्रपत्रिका, एफ. एम., केबुल आदि सञ्चारका माध्यमहरूबाट समाचारको रूपमा प्रचार प्रसारको व्यवस्था गर्ने ।

(घ) तोकिएको टोलीको संख्या र दरबन्दीका आधारमा टोलीमा खटिने कर्मचारीको व्यवस्था गर्ने ।

(ङ) जिल्लाभित्रका निजामती कर्मचारीलाई नागरिकता टोलीमा खटाउने ।

(च) प्रमुख जिल्ला अधिकारीले नागरिकता टोली प्रमुखलाई वंशजको नाताले, वैवाहिक अंगिकृत र जन्मको आधारमा नेपालको नागरिकता प्राप्त गरेका नागरिकको त्यस्तो नागरिकता प्रमाणपत्र प्राप्त गर्नु अघि जन्मेको सन्तानलाई वंशजको नाताले नागरिकता प्रमाणपत्र जारी गर्न सक्ने गरी अधिकार प्रत्यायोजन गर्ने र त्यसरी अधिकार प्रत्यायोजन गर्दा नागरिकता टोलीले नागरिकताको प्रमाणपत्र जारी गर्नु पर्ने गाउँ विकास समिति/नगरपालिकासमेत तोक्ने ।

(छ) गाउँ विकास समिति/नगरपालिकामा रहेका स्थानीय सरकारी कार्यालय र विद्यालयहरूबाट आवश्यक पर्ने भौतिक सुविधा र अन्य सहयोग

उपलब्ध गराइदिन जिल्लास्तरीय कार्यालय प्रमुखको बैठक राखी आवश्यक व्यवस्था मिलाउने ।

(ज) नागरिकता टोलीमा खटिने कर्मचारीलाई सम्बन्धित गाउँ विकास समिति/नगरपालिकामा रहेको नागरिकताको प्रमाणपत्र वितरण सम्बन्धी अभिलेख रहेको पूरानो रजिष्टर उपलब्ध गराउने ।

(झ) नागरिकता टोली गाउँमा खटिएको समयमा स्थानीय स्तरमा फोटोग्राफर उपलब्ध हुन सक्ने/नसक्ने कुराको विचार गर्नु पर्ने र गाउँमा फोटोग्राफर नभई जनतालाई नागरिकताको फोटो खिचाउन असुविधा हुन सक्ने भएमा जिल्ला सदरमुकामबाटै फोटोग्राफर पठाउने व्यवस्था गर्नु पर्ने तथा त्यसरी फोटोग्राफर पठाउँदा जनतालाई सकभर सहुलियत दरमा फोटो खिंचाउने व्यवस्था मिलाउने ।

(ञ) नागरिकता टोलीका लागि आवश्यक पर्ने अन्य कुराहरूको व्यवस्था गर्ने ।

(ट) आफ्नो जिल्ला भित्रका नागरिकता टोलीहरूको भौगोलिक क्षेत्र/ईलाका अनुसार टोली नम्बर कायम गरी अभिलेख राख्ने, राख्न लगाउने ।

(ठ) नागरिकताको प्रमाणपत्र जारी गर्ने कार्यको लागि नागरिकता टोलीमा खटिने कर्मचारी र नागरिकताको प्रमाणपत्र वितरणको काममा प्रयोग हुने अन्य कागजात तथा सामग्रीहरूको सुरक्षाका लागि नागरिकता टोलीले माग गरेमा आवश्यक सुरक्षा व्यवस्था मिलाउन लगाउने ।

(ड) कुनै समस्या वा द्विविधा परेमा क्षेत्रीय प्रशासन कार्यालय र मन्त्रालयसँग छिटो साधनबाट सम्पर्क गरी निकासा लिने ।

(ढ) साप्ताहिक रूपमा नागरिकता टोलीले नागरिकता वितरण गरेको कार्यको प्रगति अनिवार्य रूपमा क्षेत्रीय प्रशासन कार्यालय र मन्त्रालयमा पठाउने ।

(ण) नागरिकता टोलीको कामको रेखदेख, निरीक्षण, अनुगमन गरी आवश्यक सहयोग, निर्देशन र समन्वय गरी कार्यमा प्रभावकारीता ल्याउने ।

(त) नागरिकताको प्रमाणपत्र वितरणको कार्य सम्पन्न गरेपछि नागरिकता टोलीले गरेको कामको कार्य सम्पन्न प्रतिवेदन क्षेत्रीय प्रशासन कार्यालय र मन्त्रालयमा पेश गर्ने ।

## परिच्छेद-४

## नागरिकताको प्रमाणपत्र वितरण अभिलेख राख्ने सम्बन्धी व्यवस्था

१२. **नागरिकताको प्रमाणपत्र वितरणको अभिलेख राख्नु पर्ने** : (१) नागरिकता टोलीले आफूले वितरण गरेको नागरिकता प्रमाणपत्रहरूको व्यवस्थित रूपमा अभिलेख गरी सुरक्षित साथ राख्नु पर्नेछ ।

(२) नागरिकता टोलीले नागरिकता प्रमाणपत्र वितरण गर्ने काम सम्पन्न भैसकेपछि उपदफा (१) बमोजिमको अभिलेख सम्बन्धित जिल्ला प्रशासन कार्यालयमा बुझाउनु पर्नेछ ।

१३. **नागरिकताको प्रमाणपत्र वितरणको अभिलेख राख्ने सम्बन्धी कार्यविधि** : (१) नागरिकताको प्रमाणपत्र प्राप्त गर्दा पेश गर्नु पर्ने कागजातहरूको सम्बन्धमा देहाय बमोजिम गर्नु पर्नेछ :-

(क) नागरिकता प्रमाणपत्र प्राप्तिका लागि पेश भएका नियमावलीमा उल्लिखित अनुसूची फारामहरू नेपाली कागजको बनाउने र त्यस्ता अनुसूची फारामहरूमा नउड्ने कालो मसीले लेख्नु पर्ने ।

(ख) नागरिकता प्राप्त गर्न पेश गरिएका सबै प्रमाणहरू सम्बन्धित अनुसूची फारामको पछाडिपट्टि उल्लेख गरी सक्कल प्रतिसँग रुजु गरी रुजु गर्ने कर्मचारीले आफ्नो नाम र दर्जा लेखी हस्ताक्षर गर्नु पर्ने ।

(ग) नागरिकता प्राप्तिका लागि पेश गरेका नियमावलीमा उल्लेखित अनुसूची फारामहरू र अन्य प्रमाणहरू सिलसिलेबार नम्बर मिलाई फाइलमा राख्ने तथा सिलसिलेबार नम्बर दिँदा नागरिकताको प्रमाणपत्र वितरण सम्बन्धी अभिलेख रहेको रजिष्टरमा लेखिएको नागरिकताको प्रमाणपत्र नम्बरको आधारमा अनुसूचीको बाहिर नम्बर लेखी फाइलिङ्ग गर्ने । एउटा फाइलमा १०० सम्म निवेदन फाइलिङ्ग गरी फाइलको बाहिर १ देखि १०० नम्बर क्रमशः उल्लेख गर्ने ।

(२) नागरिकता टोलीले नागरिकता प्रमाणपत्र वितरण गरेको अभिलेख रहेको रजिष्टर व्यवस्थापन गर्दा देहाय बमोजिम गर्नु पर्नेछ :-

(क) नागरिकता प्रमाणपत्रको कार्यालयप्रतिको अभिलेख सुरक्षित राख्न रजिष्टर नेपाली कागजको बनाउनु पर्ने ।

(ख) नागरिकता प्रमाणपत्र वितरण गरेको अभिलेख रहेको रजिष्टर नच्यातिने गरी सुरक्षित ढंगबाट राख्ने ।

(ग) नागरिकता प्रमाणपत्र वितरण गरेको अभिलेख रहेको रजिष्टरको विभिन्न महलहरूमा तोकिए बमोजिमको पूरा विवरण उल्लेख गर्ने ।

(घ) नागरिकता प्रमाणपत्र वितरण गरेको अभिलेख रहेको रजिष्टरमा विवरण लेख्दा नउड्ने कालो मसीले लेख्ने ।

(ङ) खण्ड (ग) बमोजिमको रजिष्टरमा रहेको विवरण प्रमाणित गर्ने अधिकारीले प्रष्ट बुझिने दस्तखत गरी प्रमाणित गर्ने ।

(च) नागरिकता प्रमाणपत्र वितरण गरेको अभिलेख रहेको रजिष्टरको प्रत्येक पानाको शिर र पुछारमा तोकिएको अधिकारीले अनिवार्य रूपमा दस्तखत गरी प्रमाणित गर्ने र केरमेट भएको ठाउँमा पनि त्यस्तो कर्मचारीले दस्तखत गर्ने ।

(छ) नागरिकताको प्रमाणपत्र वितरण सम्बन्धी अभिलेख खडा गर्दा नागरिकताको किसिम र गाउँ विकास समिति वा नगरपालिका अनुसार छुट्टा छुट्टै गर्ने ।

(ज) नागरिकता प्रमाणपत्र वितरण सम्बन्धी अभिलेखको लागि खडा गरिएको रजिष्टर र फाइलहरू व्यवस्थित गर्न प्रत्येक रजिष्टरको बाहिर गाउँ विकास समिति/नयाँ कोड नम्बर र रजिष्टर नम्बर लेख्ने । (जस्तै ताप्लेजुङ्ग ०१- र रजिष्टर नम्बर १ हुँदा ०११ हुन्छ) त्यसरी रजिष्टर नम्बरको तेरिज छुट्टै कागजमा-१ (रजिष्टर नम्बर) प्रमाणित गरी राख्ने ।

(झ) नागरिकता प्रमाणपत्र वितरणसँग सम्बन्धित फाटेका, च्यातिएका वा फाट्न लागेका कागजातहरूको व्यवस्थित गर्ने जिम्मेवारी सम्बन्धित कर्मचारीको हुने ।

(३) नागरिकता प्रमाणपत्रको सम्बन्धमा देहाय बमोजिम गर्नु पर्नेछ :-

(क) नागरिकताको प्रमाणपत्रमा कालोमसीले स्पष्ट बुझिने गरी सकेसम्म केरमेट नगरीकन लेख्ने, विवरण लेखी खाली रहने महलमा लेख्न नमिल्ने गरी धर्को तान्ने ।

(ख) नागरिकताको प्रमाणपत्रमा दस्तखत गर्ने अधिकारीको नाम, थर, दर्जा र नागरिकता प्रमाणपत्र जारी मिति स्पष्टसँग उल्लेख गर्ने ।

(ग) नागरिकताको प्रमाणपत्रमा नागरिकता प्राप्त गर्ने व्यक्तिको सहीछाप र हस्ताक्षरसमेत गराउने र लेख्न नजान्नेको हकमा औंठाको सहिछाप गराउने ।

(४) नागरिकताको प्रमाणपत्रमा प्रमाणपत्र नम्बर राख्दा देहाय बमोजिम गर्नु पर्नेछ :-

(क) नागरिकताको प्रमाणपत्रमा छुट्टाछुट्टै नागरिकता प्रमाणपत्र नम्बर राख्ने ।

(ख) नागरिकताको प्रमाणपत्रमा देहाय बमोजिमको कोड नम्बर राख्नु पर्ने :-

(१) जिल्लाको कोड नम्बर अनुसूची-२ मा उल्लेख भए बमोजिमको दुई अंकमा हुनेछ ।

(२) नागरिकता प्रमाणपत्र जारी गर्ने देहायको कार्यालयको देहाय बमोजिमको कोड नम्बर हुनेछ :-

(अ) जिल्ला प्रशासन कार्यालयको कोड नम्बर - १

(आ) ईलाका/सीमा प्रशासन कार्यालय/एकीकृत सेवा केन्द्रको कोड नम्बर-२

(इ) नागरिकता टोलीको कोड नम्बर - ३

(३) गाउँ विकास समिति र नगरपालिकाको कोड नम्बर तीन अंकको हुनेछ ।

(ग) नागरिकताको प्रमाणपत्रमा प्रमाणपत्र नम्बर राख्दा जिल्ला, नागरिकता जारी गर्ने कार्यालय र गाउँ विकास समिति वा नगरपालिकाको कोड लेख्ने र सोको मुनि धर्सो तानी नागरिकता प्रमाणपत्र नम्बर लेखी नागरिकताको प्रमाणपत्र जारी गर्नु पर्नेछ ।

<u>**उदाहरणको लागि**</u> : खोटाङ्ग जिल्लाको कोड नम्बर १२ खार्पा गाउँ विकास समितिको कोड नम्बर ०१५ हुँदा पहिलो नागरिकताको प्रमाणपत्र नम्बर यस प्रकार हुनेछ :-

(१) जिल्ला प्रशासन कार्यालयबाट जारी गर्दा : १२१०१५ मुनि १ हुन्छ । जस्तै : <u>१२१०१५</u>

१

(२) इलाका/सीमा प्रशासन कार्यालयबाट जारी गर्दा : १२२०१५ मुनि १ हुन्छ । जस्तै : <u>१२२०१५</u>

१

(३) नागरिकता टोलीबाट जारी गर्दा : १२३०१५ मुनि १ हुन्छ । जस्तै : <u>१२३०१५</u>

१

(घ) प्रमुख जिल्ला अधिकारीले आफ्नो जिल्ला भित्रका प्रत्येक गाउँ विकास समिति र नगरपालिकको लागि कोड नम्बर दिनु पर्ने र त्यसरी कोड नम्बर दिँदा ००१ अंकबाट शुरु गर्नु पर्ने ।

(ङ) खण्ड (घ) बमोजिम दिइएको कोड नम्बरको एक प्रति नागरिकताको प्रमाणपत्र वितरणको अभिलेख रहेको रजिष्टरमा प्रमाणित गरी जिल्ला प्रशासन कार्यालयमा राखी सोको विवरण क्षेत्रीय प्रशासन कार्यालय र मन्त्रालयको नागरिकता वितरण अभियान कार्य सञ्चालन केन्द्रीय इकाइमा तत्काल पठाउने ।

(च) गाउँ विकास समिति र नगरपालिका पिच्छे अलग अलग नागरिकता प्रमाणपत्र नम्बर १ बाट शुरु गरी क्रमशः राख्दै जाने ।

(५) नागरिकता टोलीले नागरिकताको प्रमाणपत्र वितरण सम्बन्धी अभिलेखको सुरक्षाको लागि देहाय बमोजिम गर्नु पर्नेछ :-

(क) नागरिकताको प्रमाणपत्र वितरणसँग सम्बन्धित अभिलेखहरू राखिएको ठाउँमा सम्बन्धित कर्मचारी बाहेकका अन्य व्यक्तिको प्रवेश निषेध गर्ने ।

(ख) नागरिकताको प्रमाणपत्र वितरणसँग सम्बन्धित अभिलेखहरू सम्बन्धित कर्मचारी बाहेक अन्य व्यक्तिलाई छुन चलाउन नदिने ।

(ग) नागरिकताको प्रमाणपत्र वितरणसँग सम्बन्धित अभिलेखको व्यवस्थापन सम्बन्धी काम तोकिएको कर्मचारीको हुने ।

## परिच्छेद-५

## नागरिकता प्राप्तिको लागि निवेदन सम्बन्धी व्यवस्था

१४. **निवेदन सम्बन्धी व्यवस्था** : (१) नेपालको कुनै नागरिकले वंशजको नाताले नेपाली नागरिकताको प्रमाणपत्र लिन चाहेमा सम्बन्धित गाउँ विकास समिति वा नगरपालिकाले तोकेको पदाधिकारीको सिफारिससाथ सम्बन्धित नागरिकता टोली प्रमुख समक्ष नियमावलीको अनुसूची-१ बमोजिमको ढाँचामा निवेदन दिनु पर्नेछ ।

(२) जन्मको आधारमा नेपालको नागरिकता प्राप्त गरेको व्यक्तिको त्यस्तो नागरिकताको प्रमाणपत्र प्राप्त गर्नु अघि जन्मेको सन्तानले वंशजको आधारमा नेपालको नागरिकता प्राप्त गर्न चाहेमा आफू बसोबास गरी आएको गाउँ विकास समिति वा नगरपालिकाले तोकेको पदाधिकारीको सिफारिससाथ नागरिकता टोली प्रमुख समक्ष नियमावलीको अनुसूची-१ बमोजिमको ढाँचामा निवेदन दिनु पर्नेछ ।

(३) नेपाली नागरिकसँग वैवाहिक सम्बन्ध भएकी विदेशी महिलाले नेपालको नागरिकता प्राप्त गर्न चाहेमा आफू बसोबास गरी आएको गाउँ विकास समिति वा नगरपालिकाले तोकेको पदाधिकारीको सिफारिससाथ नागरिकता टोली प्रमुख समक्ष नियमावलीको अनुसूची-७ बमोजिमको ढाँचामा निवेदन दिनु पर्नेछ ।

(४) ऐनको दफा ८ को उपदफा (४) बमोजिम नागरिकताको प्रमाणपत्र लिन चाहने व्यक्तिको लागि नियमावलीको अनुसूची-३ बमोजिमको स्थलगत सर्जमिन मुचूल्काका अतिरिक्त सिफारिसकर्ताले सिफारिसका आधारहरूसमेत खोल्नु पर्नेछ ।

(५) उपदफा (३) मा जुनसुकै कुरा लेखिएको भए तापनि स्थानीय निकायमा निर्वाचित प्रतिनिधि नभएको अवस्थामा नगरपालिकाको हकमा कार्यकारी अधिकृतले अधिकार प्रत्यायोजन गरे बमोजिमको स्थायी कर्मचारीबाट र गाउँ विकास समितिको हकमा सम्वन्धित स्थानीय विकास अधिकारीले गाउँ विकास समितिको सचिवको हैसियतले काम गर्न तोकेको कम्तिमा राजपत्र अनङ्कित द्वितीय श्रेणी सम्मको स्थायी कर्मचारीले मात्र सिफारिस गर्न सक्नेछ ।

## परिच्छेद-६

## वंशजको नाताले नेपाली नागरिकता प्राप्ति सम्बन्धी व्यवस्था

१५. **वंशजको नाताले नेपाली नागरिकताको प्राप्ति सम्बन्धी विद्यमान कानूनी व्यवस्था** : वंशजको नाताले नेपालको नागरिकता प्राप्ति सम्बन्धमा देहायका कानूनी व्यवस्थाहरू रहेका छन् :-

(१) नेपालको अन्तरिम संविधान, २०६३ प्रारम्भ हुँदाका बखत नेपालमा स्थायी बसोबास भएको देहायको व्यक्ति वंशजको आधारमा नेपालको नागरिक ठहर्नेछ :-

(क) संविधान प्रारम्भ हुनुभन्दा अघि वंशजको आधारमा नागरिकता प्राप्त गरेको व्यक्ति,

(ख) कुनै व्यक्तिको जन्म हुँदाका बखत निजको बाबु वा आमा नेपाली नागरिक रहेछ भने त्यस्तो व्यक्ति ।

(२) नेपाल सरहदभित्र फेला परेको पितृत्व मातृत्वको ठेगान नभएको प्रत्येक नाबालक निजको बाबु वा आमा फेला नपरेसम्म वंशजको आधारमा नेपाली नागरिक ठहर्नेछ ।

*(नेपालको अन्तरिम संविधान, २०६३ को धारा ८ को उपधारा (२) र (३))*

(३) कुनै व्यक्तिको जन्म हुँदा निजका बाबु वा आमा नेपालको नागरिक रहेछ भने त्यस्तो व्यक्ति वंशजको नाताले नेपालको नागरिक हुनेछ ।

(४) नेपाल सरहदभित्र फेला परेको पितृत्व मातृत्वको ठेगान नभएको प्रत्येक नाबालक निजको बाबु वा आमाको पत्ता नलागेसम्म वंशजको नाताले नेपालको नागरिक मानिनेछ ।

(५) दफा ४ बमोजिम जन्मको आधारमा नेपालको नागरिकता प्राप्त गरेको व्यक्तिको त्यस्तो नागरिकताको प्रमाणपत्र प्राप्त गर्नु अघि जन्मेको सन्तानले वंशजको आधारमा नेपालको नागरिकता प्राप्त गर्न सक्नेछ ।

*(ऐनको दफा ३ )*

(६) वंशजको नाताले नेपाली नागरिकताको प्रमाणपत्र लिन चाहने सोह्र वर्ष उमेर पूरा भएको व्यक्तिले तोकिएको अधिकारीसमक्ष देहायका कागजातका प्रतिलिपि संलग्न राखी निवेदन दिनु पर्नेछ :-

(क) बाबु वा आमा वा आफ्नो वंशतर्फ तीन पुस्ताभित्रको नातेदारको नेपाली नागरिकताको प्रमाणपत्र,

तर विदेशी नागरिकसँग विवाह गरेकी नेपाली नागरिक महिलाको हकमा यो व्यवस्था लागू हुने छैन ।

(ख) जन्मस्थान र नाता खुल्ने गरी गाउँ विकास समिति वा नगरपालिकाले गरिदिएको सिफारिस ।

*(ऐनको दफा ८ को उपदफा (१))*

(७) वंशजको नाताले नेपाली नागरिकताको प्रमाणपत्र लिन चाहने सोह्र वर्ष उमेर पूरा भएको नेपाली नागरिकले सम्बन्धित प्रमुख जिल्ला अधिकारीसमक्ष देहायका कागजात संलग्न राखी नियमावलीको अनुसूची-३ बमोजिमको ढाँचामा निवेदन दिनु पर्नेछ :-

(क) बाबु वा आमा वा आफ्ना वंशजतर्फका तीन पुस्ताभित्रको नातेदारको नेपाली नागरिकताको प्रमाणपत्र,

(ख) जन्मस्थान र नाता खुल्ने गरी सम्बन्धित स्थानीय निकायले गरिदिएको सिफारिस वा जन्मदर्ता प्रमाणपत्र,

(ग) खण्ड (क) बमोजिम तीन पुस्ताभित्रको नातेदारको नागरिकताको प्रमाणपत्र पेश गरेको अवस्थामा उक्त नातेदारसँगको नाता खुल्ने नाता प्रमाणित पत्र ।

*(नियमावलीको नियम ३ को उपनियम (१))*

१६. **वंशजको नाताले नागरिकता प्राप्ति सम्बन्धी कार्यविधि** : कुनै व्यक्तिको जन्म हुँदा निजको बाबु वा आमा नेपालको नागरिक रहेछ भने त्यस्तो व्यक्तिलाई वंशजको नाताले नागरिकताको प्रमाणपत्र जारी गर्दा देहाय बमोजिमको कार्यविधि अवलम्वन गर्नु पर्नेछ :-

(क) नियमावलीको अनुसूची-१ मा उल्लिखित विवरण पूर्णरुपमा भरे नभरेको हेरी नभरेको भए पुरा विवरण भर्न लगाई रु १०।- को हुलाक टिकट टाँस्न लगाउने र स्थानीय निकायको सिफारिस भए नभएको यकिन गर्ने ।

(ख) नियमावलीको अनुसूची-१ बमोजिमको फारामसाथ पेश भएको नागरिकताको प्रमाणपत्रको आधिकारिकता हेरी सोको प्रतिलिपि लिई रुजु गर्ने र त्यसरी रुजु गर्ने कर्मचारीले आफ्नो नाम र दर्जा समेत उल्लेख गरी दस्तखत समेत गर्ने ।

(ग) नियमावलीको अनुसूची-१ बमोजिमको फारामसाथ नागरिकता पेश गर्ने बाबु वा आमाबाट सनाखत गराउने र सनाखत गराउने कर्मचारीले आफ्नो नाम र दर्जा समेत उल्लेख गरी दस्तखत समेत गर्ने ।

(घ) बाबु वा आमा नभएमा आफ्नो वंशजतर्फका तीन पुस्ताभित्रको नातेदारको नेपाली नागरिकताको प्रमाणपत्र र निवेदकको वंश तर्फको तीन पुस्ता खुल्ने नाता प्रमाणको आधारमा तोकिएको ढाँचामा सनाखत गराई सहीछाप समेत गराउने ।

(ङ) नागरिकता प्रमाणपत्र नलिँदै विवाह भएकी नेपाली महिलाले नागरिकताको प्रमाणपत्र लिनका लागि उल्लिखित कागजातहरूका अतिरिक्त निम्न थप कागजातहरूसमेत पेश गर्नु पर्ने :-

(क) विवाह दर्ता प्रमाण,

(ख) पति वा ससुराको नागरिकताको प्रमाणपत्र,

(ग) पति, सासू वा ससुरा वा जेठाजु वा देवरमध्ये कसैको सनाखत,

(घ) माइती पट्टिको आमा वा बाबु वा दाजु वा भाइको नागरिकताको प्रतिलिपि ।

(च) बाबु वा आमाको र छोराछोरीको नागरिकता प्रमाणपत्रमा ठेगाना परिवर्तन गरी लिन चाहेमा बसाई सराईको प्रमाणपत्र पेश गर्नु पर्ने ।

(छ) ठेगाना परिवर्तन गरी नागरिकता प्रमाणपत्र माग भएमा बाबु वा आमाको नागरिकताको आधिकारिकता यकिन गर्नु पर्ने ।

(ज) खण्ड (छ) बमोजिम आधिकारिकता यकिन गर्नु परेमा सम्बन्धित जिल्ला प्रशासन कार्यालयमा समेत बुझ्नु पर्ने ।

(झ) नागरिकता जारी गर्ने अधिकारीलाई कुनै व्यक्तिलाई नागरिकताको प्रमाणपत्र प्रदान गर्न शंका लागेमा नियमावलीको अनुसूची-३ बमोजिमको ढाँचामा स्थलगत सर्जमिन बुझ्ने ।

१७. **<u>जन्मको आधारमा नागरिकता प्रमाणपत्र प्राप्त व्यक्तिका सन्तानलाई वंशजको आधारमा नागरिकता प्राप्तिसम्बन्धी कार्यविधि</u>** : (१) जन्मको आधारमा नेपालको नागरिकता प्राप्त गरेको व्यक्तिको त्यस्तो नागरिकताको प्रमाणपत्र प्राप्त गर्नु अघि जन्मेको सन्तानलाई वंशजको नाताले नागरिकताको प्रमाणपत्र जारी गर्दा देहाय बमोजिमको कार्यविधि अवलम्वन गर्नु पर्नेछ :-

(क) नियमावलीको अनुसूची-१ मा उल्लिखित विवरण पूर्णरुपमा भरे नभरेको हेरी नभरेको भए पुरा विवरण भर्न लगाई रु १०।- को हुलाक टिकट टाँस्न लगाउने र स्थानीय निकायको सिफारिस भए नभएको यकिन गर्ने ।

(ख) नियमावलीको अनुसूची-१ बमोजिमको फारामसाथ निवेदकले बाबुको नागरिकताको प्रतिलिपि र जन्म दर्ता प्रमाणपत्रको प्रतिलिपि तथा उपलब्ध भएसम्म शैक्षिक योग्यताको प्रमाणपत्रको प्रतिलिपि पेश गर्नु पर्ने ।

(ग) नियमावलीको अनुसूची-१ बमोजिमको फारामसाथ पेश भएको बाबुको नागरिकताको प्रमाणपत्रको आधिकारिकता हेरी सोको प्रतिलिपी लिई रुजु गर्ने र त्यसरी रुजु गर्ने कर्मचारीले आफ्नो नाम र दर्जा उल्लेख गरी दस्तखत समेत गर्ने ।

(घ) नियमावलीको अनुसूची-१ बमोजिमको फारामसाथ बाबुको नेपाली नागरिकता प्रमाणपत्रको प्रतिलिपि संलग्न गरी बाबुबाट सनाखत गराउने र सनाखत गराउने कर्मचारीले आफ्नो नाम र दर्जा उल्लेख गरी दस्तखत समेत गर्ने ।

(ङ) जन्मको आधारमा नेपाली नागरिकता प्रमाणपत्र पाएको बाबुको मृत्यु भै सकेको भए नियमावलीको अनुसूची-१ बमोजिमको फारामसाथ बाबुको नेपाली नागरिकताको प्रमाणपत्र, बाबुको मृत्यु दर्ता प्रमाणपत्र, आमाको नेपाली नागरिकताको प्रमाणपत्र सहित आमाको सनाखत गराउने ।

(च) बाबुले जन्मको आधारमा नेपाली नागरिकता प्रमाणपत्र प्राप्त गरेको तर बाबु र आमा दुवैको मृत्यु भैसकेको भए प्रमुख जिल्ला अधिकारीले छानविन गरी थप प्रमाणहरू बुझी निजलाई नागरिकता प्रमाणपत्र दिन सक्ने ।

(छ) जन्मको आधारमा वितरण भएको नेपाली नागरिकताको प्रमाणपत्रको विषयमा उजुरी परी छानविन भैरहेको भए छानविन समाप्त भएपछि मात्र त्यस्तो व्यक्तिको सन्तानलाई नागरिकता प्रमाणपत्र दिन सकिने ।

(ज) बसाई सराई गरी आएकाहरूको हकमा उल्लेखित प्रमाणहरूको अतिरिक्त वसाई सराईको प्रमाणपत्र, घर जग्गाको धनीपुर्जा समेत पेश गर्नु पर्ने ।

(झ) ठेगाना परिवर्तन गरी नागरिकता प्रमाणपत्र माग भएमा बाबुको र सनाखत गर्ने व्यक्तिको नागरिकताको आधिकारिकता यकिन गर्नु पर्ने ।

(ण) खण्ड (झ) बमोजिम सनाखत गर्ने व्यक्तिको नागरिकताको आधिकारिकता यकिन गर्नु परेमा सम्बन्धित जिल्ला प्रशासन कार्यालयमा समेत बुझ्नु पर्ने ।

(२) यस दफा बमोजिम जन्मको आधारमा नेपालको नागरिकता प्राप्त गरेको व्यक्तिको त्यस्तो नागरिकताको प्रमाणपत्र प्राप्त गर्नु अघि जन्मेको सन्तानलाई वंशजको आधारमा नियमावलीको अनुसूची-२ बमोजिमको ढाँचामा नेपाली नागरिकताको प्रमाणपत्र जारी गरी नागरिकताको प्रमाणपत्र वितरणको अभिलेख रहेको रजिष्टरमा “जन्मको आधारमा नेपालको नागरिकता (ना.प्र.प.नं. ..................) प्राप्त गरेको नागरिकको सन्तान” भन्ने उल्लेख गर्नु पर्नेछ ।

## परिच्छेद-७

## वैवाहिक अङ्गीकृत नागरिकताको प्राप्तिसम्बन्धी व्यवस्था :

१८. **वैवाहिक अङ्गीकृत नागरिकताको प्राप्तिसम्बन्धी विद्यमान कानूनी व्यवस्था** : नेपाली नागरिकसँग वैवाहिक सम्बन्ध भएकी विदेशी महिलाले नेपालको नागरिकता प्राप्त गर्ने सम्बन्धमा देहायका कानूनी व्यवस्थाहरू रहेका छन् :-

(१) नेपाली नागरिकसँग वैवाहिक सम्बन्ध भएकी विदेशी महिलाले नेपालको नागरिकता प्राप्त गर्न चाहेमा तोकिएको अधिकारीसमक्ष तोकिएको ढाँचामा निवेदन दिनु पर्नेछ । त्यसरी निवेदन दिँदा नेपाली नागरिकसँग भएको वैवाहिक सम्बन्धको र आफूले विदेशी नागरिकता त्याग्ने कारबाही चलाएको निस्सा पनि साथै पेश गर्नु पर्नेछ ।

*(ऐनको दफा ५ को उपदफा (१))*

(२) अनुसूची बमोजिमको शपथग्रहण गराई तोकिएको ढाँचामा नेपाली नागरिकताको प्रमाणपत्र प्रदान गरिनेछ ।

*(ऐनको दफा ५ को उपदफा (६))*

(३) नेपाली नागरिकसँग वैवाहिक सम्बन्ध भएकी विदेशी महिलाले नेपालको नागरिकता प्राप्त गर्न चाहेमा देहायका कागजात संलग्न गरी सम्बन्धित

प्रमुख जिल्ला अधिकारीसमक्ष नियमावलीको अनुसूची-७ बमोजिमको ढाँचामा निवेदन दिनु पर्नेछ :-

(क) नेपाली नागरिकसँग भएको वैवाहिक सम्बन्ध खुल्ने गरी सम्बन्धित स्थानीय निकायले गरिदिएको सिफारिस,

(ख) निजले विदेशी नागरिकता त्याग्ने कारबाही चलाएको निस्सा ।

(२) उपनियम (१) बमोजिम प्राप्त निवेदन उपर छानबीन गर्दा निवेदक अङ्गीकृत नेपाली नागरिकताको प्रमाणपत्र पाउन योग्य देखिएमा प्रमुख जिल्ला अधिकारीले निजलाई अङ्गीकृत नेपाली नागरिकताको प्रमाणपत्र जारी गर्न सक्नेछ ।

*(नियमावलीको नियम ५ को उपनियम (१) र (२))*

१९. **<u>वैवाहिक अङ्गीकृत नागरिकताको प्राप्ति सम्बन्धी कार्यविधि</u>** : (१) नेपाली नागरिकसँग वैवाहिक सम्बन्ध भएकी विदेशी महिलाले नेपालको नागरिकता प्राप्त गर्न चाहेमा नियमावलीको अनुसूची-७ बमोजिमको ढाँचामा स्थानीय निकायले गरिदिएको सिफारिससाथ निवेदन दिनु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम निवेदन पेश गर्दा देहायका कागजातहरु समेत संलग्न गरी पेश गर्न पर्नेछ :-

(क) गाउँ विकास समिति वा नगरपालिकाले गरिदिएको सिफारिस र विवाहदर्ता प्रमाणपत्र,

(ख) विदेशी नागरिकता त्याग्ने कारबाही चलाएको निस्सा,

(ग) पतिको नागरिकताको प्रमाणपत्रको प्रतिलिपि,

(घ) वैवाहिक अङ्गीकृत नागरिकता प्राप्त गर्नुअगावै पतिको मृत्यु भइसकेको अवस्थामा पतिको मृत्युदर्ता प्रमाणपत्र र पतिसँग नाता खुल्ने तीन पुस्ता भित्रको व्यक्तिको नागरिकता प्रमाणपत्रको प्रतिलिपि र सनाखत,

(३) यस दफा बमोजिम नेपाली नागरिकसँग वैवाहिक सम्बन्ध भएकी विदेशी महिलालाई अङ्गिकृत नागरिकताको प्रमाणपत्र प्रदान गर्नु अघि त्यस्तो व्यक्तिको पति वा पतिसँग नाता खुल्ने तीन पुस्ताभित्रको अन्य व्यक्तिको नागरिकताको आधिकारिकता समेत यकिन गर्नु पर्नेछ ।

(४) यस दफा बमोजिम नेपालको नागरिकता पाउने व्यक्तिलाई ऐनको अनुसूची बमोजिमको शपथ ग्रहण गराउनु पर्नेछ ।

(५) यस दफा बमोजिम वितरण गरिएको वैवाहिक अङ्गीकृत नागरिकताको विवरण सम्बन्धी अभिलेख छुट्टै रजिष्टरमा राख्नु पर्नेछ ।

## परिच्छेद-८

## विविध

२०. **नागरिकता प्राप्ति, प्रक्रिया र दण्ड सजाय सबैले देख्ने गरी नागरिक बडापत्र राख्नु पर्ने :** (१) नागरिकता टोलीले नागरिकता वितरण सम्बन्धी कार्यलाई पारदर्शी, जवाफदेही र विश्वसनीय बनाउन तथा नागरिकताको प्रमाणपत्र प्राप्त गर्ने कार्यलाई सरल र सहज बनाउन अन्य कुराहरूको अतिरिक्त देहायका कुराहरू उल्लेख गरी सर्वसाधारण सबैले देख्ने गरी नागरिकताको प्रमाणपत्र वितरण हुने स्थानमा नागरिक बडापत्र राख्नु पर्नेछ :-

(क) नागरिकताको प्रमाणपत्र वितरणको लागि प्रमुख जिल्ला अधिकारीले अधिकार प्रत्यायोजन गरी खटाएको नागरिकता टोली प्रमुखको नाम, दर्जा उल्लेख गर्नु पर्ने ।

(ख) नागरिकताको प्रमाणपत्र नेपाल सरकारद्वारा निःशुल्क उपलब्ध गराउने र यसका लागि कुनै किसिमको सेवा शुल्क र दस्तुर लाग्ने छैन भन्ने ।

(ग) नागरिकता पाउने व्यक्तिले देहायका शर्तहरूको पालना गर्नु पर्ने जानकारी :-

(१) तोकिएको ढाँचामा पूरा विवरण भरी निवेदन दिनु पर्ने ।

(२) निवेदनसाथ तोकिए बमोजिमका प्रमाणहरू पेश गर्नु पर्ने ।

(३) निवेदन नेपाली नागरिकले मात्र दिन सक्ने ।

(४) निवेदकको नाम, थर, जात, बाबुको नाम, ठेगाना, राष्ट्रियताका सम्बन्धमा गलत विवरण दिन नहुने । ठीक साँचो विवरण दिनु पर्ने ।

(५) निवेदकले आवश्यकता अनुसार जन्म दर्ता प्रमाण पत्र, जन्ममिति खुल्ने शैक्षिक योग्यताको प्रमाणपत्र पेश गर्नु पर्ने ।

(घ) देहायको अवस्थामा नागरिकता रद्द हुने जानकारी :-

(१) झुठो विवरण दिएमा ।

(२) नाम, थर, जात, ठेगाना, बाबुको नाम, राष्ट्रियता ढाँटेमा ।

(३) गैर नेपालीले नेपाली नागरिकताको प्रमाणपत्र लिएमा ।

(ङ) देहायको अवस्थामा नागरिकता कायम नरहने जानकारी :-

(१) कुनै विदेशी मुलुकको नागरिकता प्राप्त गरेमा ।

(२) नेपाली नागरिकता त्याग गरेको सूचना दर्ता गरेमा ।

(च) नागरिकता सम्बन्धी प्रचलित कानून विपरीत नागरिकता लिएमा वा लिने उद्योग गर्ने वा मद्दत गर्ने व्यक्तिलाई हुने दण्ड सजाय सम्बन्धी व्यवस्थाको जानकारी :

| | | |
|---|---|---|
| झुठो विवरण दिई विदेशीले नागरिकता लिएमा | • एक वर्षदेखि पाँच वर्षसम्म कैद वा<br>• पचास हजार रुपैयाँ देखि एक लाख रुपैयाँसम्म जरिवाना वा<br>• दुवै सजाय | ऐनको दफा २१ को उपदफा (१) |
| विदेशीलाई झुट्टो विवरणको आधारमा नागरिकता दिलाउने कार्यमा सनाखत गरेमा वा सिफारिस गरेमा | • छ महिनादेखि तिन वर्षसम्म कैद वा<br>• पच्चीस हजार रुपैयाँदेखि पचास हजार रुपैयाँसम्म जरिवाना वा<br>• दुवै सजाय | ऐनको दफा २१ को उपदफा (२) |
| झुठो वा किर्ते नागरिकताको प्रमाणपत्र खडा गरेमा वा बनाई प्रचलनमा ल्याएमा | • एक वर्षदेखि पाँच वर्षसम्म कैद वा<br>• बीस हजार रुपैयाँदेखि एक लाख रुपैयाँसम्म जरिवाना वा<br>• दुवै सजाय | ऐनको दफा २१ को उपदफा (३) |
| नागरिकताको विवरणमा आफूखुसी सच्याएमा | • तीन महिनासम्म कैद वा<br>• दस हजार रुपैयाँसम्म जरिवाना वा<br>• दुवै सजाय | ऐनको दफा २१ को उपदफा (४) |
| नेपाली नागरिकले झुठो विवरण दिई नागरिकता प्राप्त गरेमा वा सच्चाईएको विवरण झुट्टो प्रमाणित भएमा | • पन्ध्र हजार रुपैयाँसम्म जरिवाना | ऐनको दफा २१ को उपदफा (५) |
| ऐन तथा नियमावलीको बर्खिलाप कार्य गरेमा | • पन्ध्र हजार रुपैयाँसम्म जरिवाना | ऐनको दफा २१ को उप दफा (५) |
| कर्मचारीले बदनियतपूर्वक नागरिकता दिएमा वा विवरण सच्याएमा | • विभागीय कारबाही | ऐनको दफा २१ को उप दफा (६) |
| ऐन बमोजिमको कसूर गर्न उद्योग गर्ने वा मद्दत गर्ने व्यक्तिलाई | • मुख्य कसुरदारलाई हुने दण्ड सजायको आधा | • ऐनको दफा २१ को उप दफा (७) |

(२) उपदफा (१) बमोजिम टाँस गरिएको सूचना च्यातिएमा वा बिग्रेमा पुनः टाँस्नु पर्नेछ र यो काम नागरिकता टोलीले निरन्तररुपमा जारी राख्नु पर्नेछ ।

२१. **नागरिकताको प्रमाणपत्र जारी गर्दा ध्यान दिनु पर्ने अन्य विषय** : यस निर्देशिका बमोजिम नागरिकताको प्रमाणपत्र जारी गर्दा अन्य कुराका अतिरिक्त देहायका विषयहरूलाई समेत ध्यान दिनु पर्नेछ :-

(क) विवाहित महिलाले नागरिकताको लागि निवेदन गर्दा श्रीमानको नाम थर ठेगाना लगायत माईतीतर्फका बाबु आमाको विवरण समेत निवेदनमा स्पष्ट रुपले उल्लेख गर्नु पर्ने व्यवस्था रहेकोमा कुनै किसिमबाट निजले पतिको विवरण स्पष्ट गर्न नसकेको खण्डमा वंशज (बाबु आमाको नाताबाट) खुल्ने प्रमाणको आधारमा वंशजको नाताले नेपाली नागरिकता जारी गर्न सकिने ।

(ख) बाबु वा आमाको अलग अलग वतन भएको कारणबाट नागरिकता लिन कठिनाई परेको अवस्थामा निवेदकको बाबु आमाको अलग अलग वतन भएको कारणबाट नागरिकता लिन कठिनाई परेको अवस्थामा निवेदकको बाबु आमाको अलग अलग वतन भए पनि निजले रोजेको ठेगाना मध्ये कुनै एक स्थानमा सम्बन्धित निकायको सिफारिस साथ तोकिएको कार्यविधि पुरा गरी नागरिकताको प्रमाणपत्र माग्न आएमा निजले रोजेको बाबु आमाको ठेगाना मध्ये कुनै एक स्थानबाट नागरिकताको प्रमाणपत्र जारी गर्ने ।

(ग) दलित जातिका मानिसहरूलाई नागरिकता प्रदान गर्दा अन्य नागरिक सरह थर राखी नागरिकता जारी गर्न कुनै बाधा नपर्ने ।

(घ) माइती पक्ष (बाबु आमा दाजुभाइ) यकिन गर्न नसकी अरुको सहारामा बसेका महिलाहरूलाई विवाह पश्चात कानूनले तोकेको रित पुऱ्याई पतिको सनाखतबाट नागरिकता जारी गर्ने ।

(ङ) लिङ्गको महलमा अन्य लेखी नागरिकताको लागि आवेदन गर्ने यौनिक तथा लैङ्गिक अल्पसंख्यक समुदायका व्यक्तिहरूलाई लिङ्गको महलमा "अन्य" जनाई नागरिकता जारी गर्ने सम्बन्धी निर्देशिका, २०६९ अनुसार नागरिकता जारी गर्ने ।

२२. **विवरण पठाउनु पर्ने** : (१) नागरिकता टोलीबाट वितरण भएका नागरिकताको साप्ताहिक प्रगति विवरण जिल्ला प्रशासन कार्यालयमा अनुसूची-३ बमोजिमको ढाँचामा पठाउनु पर्नेछ ।

(२) वितरण भएका, नासिए बिग्रिएका र मौज्दात रहेका नागरिकताका प्रमाणपत्र र सुरक्षा चिन्हको हिसाब स्पष्ट देखिने गरी दैनिक रुपमा राख्ने र सोको विवरण साप्ताहिक रूपमा जिल्ला प्रशासन कार्यालयमा पठाउनु पर्नेछ ।

(३) बिग्रिएका नागरिकता प्रमाणपत्र तथा सुरक्षा चिन्ह जिल्ला प्रशासन कार्यालयमा पठाउनु पर्नेछ ।

२३. **सुरक्षा चिन्ह** : (१) नागरिकता टोलीलाई प्राप्त सुरक्षा चिन्ह (होलोग्राम) सुरक्षित रूपमा राख्नु पर्नेछ ।

(२) नागरिकताको प्रमाणपत्रमा टाँसिएको फोटो र नागरिकताको प्रमाणपत्र दुवै ठाउँमा पर्ने गरी सुरक्षा चिन्ह (होलोग्राम) टाँस्नु पर्नेछ ।

२४. **भौतिक सुविधा व्यवस्थापन** : नागरिकताको टोलीले नागरिकताको प्रमाणपत्र वितरण सम्बन्धी अभिलेख सुरक्षित राख्न आवश्यक पर्ने भौतिक सुविधा जुटाउनेतर्फ गाउँ विकास समिति, नगरपालिका वा सरकारी कार्यालयसँग समन्वय गर्न सक्नेछ ।

२५. **दस्तखत नमूना** : नागरिकता जारी गर्ने टोली प्रमुखको नाम थर, टोली नम्बर समेत उल्लेख गरी एक/एकप्रति दस्तखत नमूना मन्त्रालय र क्षेत्रीय प्रशासन कार्यालयमा पठाई एकप्रति जिल्ला प्रशासन कार्यालयको अभिलेखमा राख्नु पर्नेछ । दस्तखत नमूना अनुसूची-४ बमोजिमको ढाँचामा उल्लेख भए बमोजिम हुनेछ ।

२६. **प्राथमिकताको आधारमा नागरिकताको प्रमाणपत्र दिने** : (१) नागरिकता टोलीले नागरिकताको प्रमाणपत्र देहायको प्राथमिकताको आधारमा वितरण गर्नु पर्नेछ :-

(क) पहिले आउनेको काम पहिले गर्ने ।

(ख) खण्ड (क) मा जुनसुकै कुरा लेखिएको भए तापनि अशक्त, अपाङ्गता भएका व्यक्ति र वृद्धवृद्धाहरूलाई पहिलो प्राथमिकतामा राख्ने ।

(२) नागरिकता टोलीले उपदफा (१) बमोजिम प्रत्येक दिन आफूले वितरण गरेको नागरिकताको प्रमाणपत्र पाउने व्यक्तिको नामावली सोही दिन बेलुका प्रकाशित गर्नु पर्नेछ ।

२७. **अनुगमनको व्यवस्था** : नागरिकताको प्रमाणपत्र वितरणको कामको अनुगमन जिल्ला प्रशासन कार्यालय, क्षेत्रीय प्रशासन कार्यालय र मन्त्रालयले गर्नेछ ।

२८. **स्वतः अमान्य हुने** : (१) यस निर्देशिकामा लेखिएको कुनै व्यवस्था ऐन तथा नियमावलीको व्यवस्थासँग बाझिन गएमा बाझिएको हदसम्म निर्देशिकामा लेखिएको त्यस्तो व्यवस्था स्वतः अमान्य हुनेछ ।

२९. **खारेजी** : (१) नागरिकता प्रमाणपत्र वितरण कार्यविधि निर्देशिका, २०६३ को परिच्छेद-१२ खारेज गरिएको छ ।

(२) उपदफा (१) बमोजिम भए गरेको काम कारवाही यसै निर्देशिका बमोजिम भए गरेको मानिनेछ ।

# अनुसूची-१

## (दफा ३ सँग सम्बन्धित)

## जिल्लागत नागरिकता टोलीको संख्यात्मक विवरण

### पूर्वाञ्चल विकास क्षेत्र

| सि.नं. | जिल्ला | टोली संख्या | प्रति टोली कर्मचारी | कुल कर्मचारी संख्या |
|---|---|---|---|---|
| १ | ताप्लेजुङ | ५ | ७ | ३५ |
| २ | पाँचथर | ५ | ७ | ३५ |
| ३ | इलाम | ७ | ७ | ४९ |
| ४ | झापा | १३ | ७ | ९१ |
| ५ | मोरङ | १८ | ७ | १२६ |
| ६ | सुनसरी | १३ | ७ | ९१ |
| ७ | धनकुटा | ६ | ७ | ४२ |
| ८ | तेह्रथुम | ५ | ७ | ३५ |
| ९ | भोजपुर | ८ | ७ | ५६ |
| १० | संखुवासभा | ५ | ७ | ३५ |
| ११ | सोलुखुम्बु | ५ | ७ | ३५ |
| १२ | खोटाङ | ७ | ७ | ४९ |
| १३ | ओखलढुङ्गा | ५ | ७ | ३५ |
| १४ | उदयपुर | ८ | ७ | ५६ |

| | | | | |
|---|---|---|---|---|
| १५ | सिराहा | १५ | ७ | १०५ |
| १६ | सप्तरी | १२ | ७ | ८४ |
| जम्मा | | १३७ | ११२ | ९५९ |

**मध्यमाञ्चल विकास क्षेत्र**

| सि.नं. | जिल्ला | टोली संख्या | प्रति टोली कर्मचारी | कुल कर्मचारी संख्या |
|---|---|---|---|---|
| १७ | धनुषा | १५ | ७ | १०५ |
| १८ | महोत्तरी | १६ | ७ | ११२ |
| १९ | सर्लाही | १८ | ७ | १२६ |
| २० | सिन्धुली | ७ | ७ | ४९ |
| २१ | रामेछाप | ५ | ७ | ३५ |
| २२ | दोलखा | ५ | ७ | ३५ |
| २३ | रसुवा | ३ | ७ | २१ |
| २४ | सिन्धुपाल्चोक | १० | ७ | ७० |
| २५ | नुवाकोट | ८ | ७ | ५६ |
| २६ | धादिङ्ग | ७ | ७ | ४९ |
| २७ | काठमाण्डौ | ४ | ७ | २८ |
| २८ | ललितपुर | ६ | ७ | ४२ |
| २९ | भक्तपुर | ३ | ७ | २१ |

| | | | | |
|---|---|---|---|---|
| ३० | काभ्रेपलान्चोक | ९ | ७ | ६३ |
| ३१ | मकवानपुर | ८ | ७ | ५६ |
| ३२ | रौतहट | १४ | ७ | ९८ |
| ३३ | बारा | १६ | ७ | ११२ |
| ३४ | पर्सा | १४ | ७ | ९८ |
| ३५ | चितवन | ८ | ७ | ५६ |
| जम्मा | | १७६ | १३३ | १२३२ |

**पश्चिमाञ्चल विकास क्षेत्र**

| सि.नं. | जिल्ला | टोली संख्या | प्रति टोली कर्मचारी | कुल कर्मचारी संख्या |
|---|---|---|---|---|
| ३६ | नवलपरासी | १३ | ७ | ९१ |
| ३७ | रुपन्देही | १५ | ७ | १०५ |
| ३८ | कपिलबस्तु | १० | ७ | ७० |
| ३९ | पाल्पा | ६ | ७ | ४२ |
| ४० | अर्घाखाँची | ५ | ७ | ३५ |
| ४१ | गुल्मी | ६ | ७ | ४२ |
| ४२ | स्याङ्जा | ८ | ७ | ५६ |
| ४३ | तनहुँ | ६ | ७ | ४२ |
| ४४ | गोरखा | ८ | ७ | ५६ |
| ४५ | लमजुङ | ५ | ७ | ३५ |

| | | | | |
|---|---|---|---|---|
| ४६ | कास्की | ७ | ७ | ४९ |
| ४७ | मनाङ | २ | ७ | १४ |
| ४८ | मुस्ताङ | २ | ७ | १४ |
| ४९ | म्याग्दी | ४ | ७ | २८ |
| ५० | वाग्लुङ्ग | ६ | ७ | ४२ |
| ५१ | पर्वत | ६ | ७ | ४२ |
| जम्मा | | १०९ | ११२ | ७६३ |

**मध्यपश्चिमाञ्चल विकास क्षेत्र**

| सि.नं. | जिल्ला | टोली संख्या | प्रति टोली कर्मचारी | कुल कर्मचारी संख्या |
|---|---|---|---|---|
| ५२ | दाङ | ७ | ७ | ४९ |
| ५३ | प्यूठान | ६ | ७ | ४२ |
| ५४ | रोल्पा | ५ | ७ | ३५ |
| ५५ | सल्यान | ५ | ७ | ३५ |
| ५६ | रुकुम | ४ | ७ | २८ |
| ५७ | डोल्पा | ५ | ७ | ३५ |
| ५८ | मुगु | ४ | ७ | २८ |
| ५९ | हुम्ला | ४ | ७ | २८ |
| ६० | जुम्ला | ४ | ७ | २८ |
| ६१ | कालिकोट | ५ | ७ | ३५ |

| | | | | |
|---|---|---|---|---|
| ६२ | जाजरकोट | ५ | ७ | ३५ |
| ६३ | दैलेख | ८ | ७ | ५६ |
| ६४ | सुर्खेत | ७ | ७ | ४९ |
| ६५ | बर्दिया | ७ | ७ | ४९ |
| ६६ | बाँके | ९ | ७ | ६३ |
| जम्मा | | ८५ | १०५ | ५९५ |

**सुदूरपश्चिमाञ्चल विकास क्षेत्र**

| सि.नं. | जिल्ला | टोली संख्या | प्रति टोली कर्मचारी | कुल कर्मचारी संख्या |
|---|---|---|---|---|
| ६७ | कैलाली | ९ | ७ | ६३ |
| ६८ | डोटी | ६ | ७ | ४२ |
| ६९ | अछाम | ६ | ७ | ४२ |
| ७० | बाजुरा | ५ | ७ | ३५ |
| ७१ | बझाङ्ग | ५ | ७ | ३५ |
| ७२ | दार्चुला | ५ | ७ | ३५ |
| ७३ | बैतडी | ६ | ७ | ४२ |
| ७४ | डडेल्धुरा | ५ | ७ | ३५ |
| ७५ | कन्चनपुर | ७ | ७ | ४९ |
| जम्मा | | ५४ | ५२५ | ३७८ |
| कूल जम्मा | | ५६१ | | ३९२७ |

## अनुसूची -२

### (दफा १३ सँग सम्बन्धित)

### <u>जिल्लागत कोड नम्बर</u>

| सि.नं. | जिल्लाको नाम | कोड नं. |
|---|---|---|
| 1 | ताप्लेजुङ्ग | 01 |
| 2 | पाँचथर | 02 |
| 3 | इलाम | 03 |
| 4 | झापा | 04 |
| 5 | मोरङ्ग | 05 |
| 6 | सुनसरी | 06 |
| 7 | धनकुटा | 07 |
| 8 | तेह्रथुम | 08 |
| 9 | भोजपुर | 09 |
| 10 | संखुवासभा | 10 |
| 11 | सोलुखुम्बु | 11 |
| 12 | खोटाङ | 12 |
| 13 | ओखलढुङ्गा | 13 |
| 14 | उदयपुर | 14 |
| 15 | सिराहा | 15 |
| 16 | सप्तरी | 16 |
| 17 | धनुषा | 17 |
| 18 | महोत्तरी | 18 |
| 19 | सर्लाही | 19 |
| 20 | सिन्धुली | 20 |
| 21 | रामेछाप | 21 |
| 43 | तनहुँ | 43 |
| 44 | गोरखा | 44 |

| सि.नं. | जिल्लाको नाम | कोड नं. |
|---|---|---|
| 22 | दोलखा | 22 |
| 23 | रसुवा | 23 |
| 24 | सिन्धुपाल्चोक | 24 |
| 25 | नुवाकोट | 25 |
| 26 | धादिङ्ग | 26 |
| 27 | काठमाडौं | 27 |
| 28 | ललितपुर | 28 |
| 29 | भक्तपुर | 29 |
| 30 | काभ्रेपलाञ्चोक | 30 |
| 31 | मकवानपुर | 31 |
| 32 | रौतहट | 32 |
| 33 | बारा | 33 |
| 34 | पर्सा | 34 |
| 35 | चितवन | 35 |
| 36 | नवलपरासी | 36 |
| 37 | रुपन्देही | 37 |
| 38 | कपिलवस्तु | 38 |
| 39 | पाल्पा | 39 |
| 40 | अर्घाखाँची | 40 |
| 41 | गुल्मी | 41 |
| 42 | स्याङ्जा | 42 |
| 61 | कालिकोट | 61 |
| 62 | जाजरकोट | 62 |

| सि.नं. | जिल्लाको नाम | कोड नं. |
|---|---|---|
| 45 | लमजुङ | 45 |
| 46 | कास्की | 46 |
| 47 | मनाङ | 47 |
| 48 | मुस्ताङ | 48 |
| 49 | म्याग्दी | 49 |
| 50 | वाग्लुङ्ग | 50 |
| 51 | पर्वत | 51 |
| 52 | दाङ | 52 |
| 53 | प्यूठान | 53 |
| 54 | रोल्पा | 54 |
| 55 | सल्यान | 55 |
| 56 | रुकुम | 56 |
| 57 | डोल्पा | 57 |
| 58 | मुगु | 58 |
| 59 | हुम्ला | 59 |
| 60 | जुम्ला | 60 |

| सि.नं. | जिल्लाको नाम | कोड नं. |
|---|---|---|
| 63 | दैलेख | 63 |
| 64 | सुर्खेत | 64 |
| 65 | बर्दिया | 65 |
| 66 | बाँके | 66 |
| 67 | कैलाली | 67 |
| 68 | डोटी | 68 |
| 69 | अछाम | 69 |
| 70 | बाजुरा | 70 |
| 71 | बझाङ्ग | 71 |
| 72 | दार्चुला | 72 |
| 73 | वैतडी | 73 |
| 74 | डडेल्धुरा | 74 |
| 75 | कञ्चनपुर | 75 |

## अनुसूची -३
नागरिकता टोलीबाट वितरण गरिएको नेपाली नागरिकताको विवरण
(दफा २२ को उपदफा १ संग सम्बन्धित)

| ना.प्र.प.को किसिम | | मिति ........ देखि ......... सम्म | जम्मा | अपाङ्ग | ६० वर्ष नाघेका | प्रतिशत | कैफियत |
|---|---|---|---|---|---|---|---|
| वंशज | महिला | | | | | | |
| | पुरुष | | | | | | |
| | अन्य | | | | | | |
| जन्मका सन्तान | महिला | | | | | | |
| | पुरुष | | | | | | |
| | अन्य | | | | | | |
| वैवाहिक अंगिकृत | | | | | | | |
| जम्मा | | | | | | | |

अनुसूची- ४

दस्तखत नमूना राख्ने ढाँचा

(दफा २५ संग सम्बन्धित)

कार्यालयको नाम :

नागरिकता जारी गर्ने अधिकारीको नाम र थर :

पद :

१) ..................................(नेपालीमा दस्तखत नमूना)

२)....................................(अंग्रेजीमा दस्तखत नमूना)

दस्तखत प्रमाणित गर्ने अधिकारीको :

दस्तखत :

नामः

दर्जा :

मिति :..